मासिक बालपत्रिका

# मुना

२०८१ असार



सुरुङ यसरी बनाइन्छ

चिया गफमै खोलिएको विद्यालय

## एआईको चमत्कार



# एआईको चमत्कार



अजय शर्मा



एआईको प्रयोगबाट कम्प्युटरले पनि मानिसले जस्तै भाषा प्रशोधन, समस्या समाधानका साथै आफैँ पढ्ने, सोच्ने, विचार गर्ने, तर्क गर्ने, सिक्नेलगायतका काम गर्न सक्छ ।

एलेक्सा वा सिरीका बारेमा सुन्नुभएको छ ? स्वचालित कार (सेल्फ ड्राइभिङ कार) का बारेमा पढ्नु भएको छ ? स्मार्ट फोनमा अनुहार पहिचान गर्ने (फेस रिकग्निसन) प्रविधिले कसरी काम गर्छ भन्ने थाहा पाउनुभएको छ ? यी सबै प्रविधिमा धेरै समानता रहेका छन् । त्यो के भने यिनीहरूमा कृत्रिम बौद्धिकता (एआई) को प्रयोग गरिएको छ ।

भाइबहिनीहरू, तपाईंहरूले यसअघि नै एआईको प्रयोग गर्नुभएको हुन सक्छ । यस पटक हामीले एआईले कसरी काम गर्छ भन्ने विषयमा केही उपयोगी जानकारी दिने छौँ ।

कृत्रिम बौद्धिक (आर्टिफिसियल इन्टेलिजेन्स) भनेको कम्प्युटरको सोच्ने र सिक्ने क्षमता हो । एआईको प्रयोगबाट कम्प्युटरले पनि मानिसले जस्तै भाषा प्रशोधन, समस्या समाधानका साथै आफैँ पढ्ने, सोच्ने, विचार गर्ने, तर्क गर्ने, सिक्नेलगायतका काम गर्न सक्छ । अझ भनौँ, अन्य प्रकारका नयाँ प्रविधि जस्तै एआई एउटा नयाँ र उन्नत टुल हो ।

## एआई के हो ?

भाइबहिनीहरू, तपाईंले 'आर्टिफिसियल इन्टेलिजेन्स' शब्द धेरै पटक सुन्दै आउनुभएको होला । हामीले दिएको कुरा मान्ने र बुझ्ने, स्थान चिन्ने, अनुहार चिन्ने र आफैँ सोचविचार गर्न सक्ने क्षमता नै कृत्रिम बुद्धिलाई 'आर्टिफिसियल इन्टेलिजेन्स' अर्थात् एआई हो । मानिसमा भएको क्षमता वा इन्टेलिजेन्सलाई प्रोग्रामिङमार्फत मेसिनमा नक्कल गरिसकेपछि जब यसले मानिसले जस्तै सोच्न

र क्रियाकलाप गर्न थाल्छ, तब त्यसलाई मेसिन इन्टेलिजेन्स वा आर्टिफिसियल इन्टेलिजेन्स भनिन्छ । यस्तो कृत्रिम बुद्धिले मानिसलाई विभिन्न कुरामा सहयोग गर्छ । यसले मेसिनलाई सोच्न सक्ने र आफैँ निर्णय लिन सक्ने बनाउँछ ।

## एआईका केही उदाहरण

भाइबहिनीहरू, हामीले माथि नै भर्चुअल सहायक र सेल्फड्राइभिङ कारलगायतका एआईका केही उदाहरणका बारेमा कुरा गरिसक्यौँ । हामीले विभिन्न काममा कृत्रिम बौद्धिकताको प्रयोग गर्न सक्छौँ । हामीले जानेर वा नजानेर धेरै काममा एआईको प्रयोग गरिरहेका छौँ । त्यसका बारेमा कुरा गरौँ ।

## भिडियो र चलचित्र सिफारिस

तपाईंले युट्युब वा नेटफ्लिक्समा कुनै भिडियो वा चलचित्र हेर्ने गर्नुभएको छ भने । त्यहाँ तपाईंले पहिले नै हेर्नुभएको कुराको आधारमा अन्य भिडियो र चलचित्रका लागि सिफारिस प्राप्त गर्नुहुने छ । यो सबै एआईले गर्दा भएको हो ।

## च्याटबट

अहिले तपाईंले हेर्ने धेरै जसो वेबसाइटमा च्याटबट पाउनुहुन्छ । जसले तपाईंका प्रश्नको जवाफ दिन मद्दत गर्दछन् । यी च्याटबट सामान्यतया मानिसद्वारा सञ्चालित हुँदैनन् । तिनीहरू एआई हुन् ।

## सर्च इन्जिन

कुनै कुरा खोज्नु पर्‍यो भने हामी सबैले हरेक दिन गुगललगायतका सर्च इन्जिन प्रयोग गर्ने गर्छौँ । सर्च इन्जिनले तपाईंले खोजेको कुरा विभिन्न वेबसाइटबाट खोजेर तपाईंलाई 'सर्च रिजल्ट' मा देखाउन एआई नै प्रयोग गर्छ । तपाईंले यसअघि प्रयोग गरेका एआईको अन्य उदाहरण सम्झनु भयो ? हामीले भर्खरै बताएका जस्तै तपाईंले एक पटक एआईका विभिन्न उदाहरण फेला पार्न थाल्नु भयो भने तपाईंले आफ्नो दैनिक जीवनमा कृत्रिम बौद्धिकता कहाँ कहाँ प्रयोग भइरहेको छ भन्ने पत्ता लगाउन थाल्नुहुने छ ।

## एआईको मह□व के छ त ?

एआई हामी सबैको वरिपरि प्रयोगमा छ । तपाईंले यसका बारेमा थाहा पाउनु भयो वा भएन ? तर के बालबालिका के वृद्ध सबैले हरेक दिन जानेर वा नजानेर कृत्रिम बौद्धिकताको प्रयोग गर्ने गरेका छन् ।

अहिले हामीले प्रयोग गरिरहेको एआई पहिलो चरणको हो । कम्प्युटर वैज्ञानिकहरूले भविष्यमा कृत्रिम बुद्धिमत्ता अझ व्यापक र लोकप्रिय हुने भविष्यवाणी गर्ने गरेका छन् । त्यसैले सबै उमेर समूहका मानिसले एआईले कसरी काम गर्छ भनेर बुझ्नु आवश्यक छ ।

अहिले धेरै पेसामा एआईको प्रयोग भइरहेको छ । डाक्टरहरूले एक्सरे जस्ता मेडिकल स्क्यानको आधारमा बिरामीको उपचार गर्न एआईको प्रयोग गर्ने गरेका छन् ।

त्यस्तै अन्तरिक्षयात्रीले हाम्रो सौर्य मण्डल बाहिरका ग्रह पत्ता लगाउन एआई मोडेल प्रयोग गर्न सक्छन् । यी एक, दुई उदाहरण मात्र हुन् । एआईको प्रयोग जुनसुकै पेसा वा कामका लागि हुन सक्छ । ■





एआई हामी सबैको वरिपरि प्रयोगमा छ । तपाईंले यसका बारेमा थाहा पाउनु भयो वा भएन ? तर के बालबालिका के वृद्ध सबैले हरेक दिन जानेर वा नजानेर कृत्रिम बौद्धिकताको प्रयोग गर्ने गरेका छन् ।